


दर्ता नं : २४४९३५/०७७/०७८
स्था.ले.नं : ६०९८२६५८२

सन् २०१८ मा फुक्का संजालको रुपले सुरु भएको सन् २०२० मा मुनाफा वितरण नगर्ने संस्थाका रूपमा दर्ता भएको हामी सिमान्तकृत यौन अभिमुखिकरण, लैङ्गिक पहिचान र यौन विशेषताका व्यक्ति (क्वयेर व्यक्ति)हरूद्वारा नेतृत्व गरिएको र क्वयेर अधिकारमा कार्यरत छौं।

नेपाल संवत् ११४१ चौला १३
२०७७ चैत १८ गते

Ref. No. चलानी नं ०२७/७७/७८
Date मिति २०७७/१२/१८
PN पत्र ९२

का.मु. सचिवज्यू,
भाषा आयोग,
यन्ताबुँ, शंखमूल, यैं (काठमाडौं)।

**विषय : पारलैङ्गिक व्यक्तिहरू सम्बन्धी सञ्चार माध्यममा संवेदनशील, सही र उचित भाषाको प्रयोग सम्बन्धी सिफारिस गरिपाउँ।**

आज मार्च ३१ तारिखका दिन अन्तर्राष्ट्रिय रूपमा पारलैङ्गिक दृश्यताको अन्तर्राष्ट्रिय दिवस (International Transgender Day of Visibility) मनाइँदै छ। यसै दिवसको उपलक्षमा हामी उपरोक्त सम्बन्धमा सञ्चार माध्यमहरूमा पारलैङ्गिक व्यक्तिहरू सम्बन्धी संवेदनशील र उचित भाषा प्रयोग नभइरहेको साथै सम्बन्धित निकाय प्रेस काउन्सिलले पनि यस विषयमा कुनै निर्देशिका वा मापदण्ड जारी नगरेको तथ्यमा ध्यानाकर्षण गराउन चाहन्छौं।

नेपाली भाषामा प्रकाशन हुने सञ्चार माध्यमहरूले पारलैङ्गिक व्यक्तिहरूलाई समेत 'तेस्रोलिङ्गी' भनेर सम्बोधन गर्ने प्रचलन रहेको पाइन्छ । विशेष गरी अङ्ग्रेजी भाषामा 'Transgender' शब्दलाई नेपाली सञ्चार माध्यमहरूले 'तेस्रोलिङ्गी' भनि उल्था गर्दै आएको पाइन्छ। यसका केही उदाहरणहरू हामीले यसै पत्र साथ संलग्न गरेका छौं। 'पारलैङ्गिक व्यक्ति' (Transgender person) भन्नाले जन्मँदा यौनाङ्गका आधारमा इङ्गित गरिएको लैङ्गिकता भन्दा फरक लैङ्गिक पहिचान भएका व्यक्तिहरू हुन् भने जन्मँदा पुलिङ्गी इङ्गित गरिएका लैङ्गिक पहिचान महिला हुने 'पारलैङ्गिक महिला' (Trans woman) र जन्मँदा स्त्रीलिङ्गी इङ्गित गरिएका लैङ्गिक पहिचान पुरुष हुने 'पारलैङ्गिक पुरुष' (Trans man) हुन्। पारलैङ्गिक महिलाहरू महिला र पारलैङ्गिक पुरुषहरू पुरुष भनि आफूलाई पहिचान गर्दछन् । 'तेस्रोलिङ्गी व्यक्ति' (Third gender person) भन्नाले महिला र पुरुष भन्दा फरक भनि पहिचान गर्ने व्यक्तिहरू हुन्। यसार्थ 'पारलैङ्गिक व्यक्ति' (Transgender person) र 'तेस्रोलिङ्गी व्यक्ति' (Third gender person) भन्नाले तात्विक रूपमा फरक शब्दहरू हुन्।

नेपाली भाषाको सामान्य ज्ञान भएका व्यक्तिहरूले पनि 'तेस्रोलिङ्गी' शब्दको अर्थ 'Third gender' रहेको भनि बुझ्न सक्छन्। भाषावैज्ञानिक विश्लेषण गर्ने हो भने Etymology अनुसार नेपाली भाषामा 'लैङ्गिक' मूल शब्दमा 'पार' उपसर्ग जोडिएर र अङ्ग्रेजी भाषामा 'gender' मूल शब्दमा 'trans' उपसर्ग जोडिएर यस शब्दको उत्पत्ति भएको हो। संस्कृत भाषामा 'पार'को अर्थ 'across, on the other side' भन्ने लाग्छ। नेपाली भाषामा पनि यही अभिप्राय जनाउन प्रयोग गरिन्छ। [नेपाली बृहत् शब्दकोष, पुनर्मुद्रित दसौं संस्करण, विसं २०७७, पृष्ठ ७८२] ल्याटिन भाषामा 'trāns' को अर्थ "across, on the far side, beyond" हो। अङ्ग्रेजी भाषामा सोही अभिप्राय जनाउन 'trans' लाई उपसर्गका रूपमा प्रयोग गरिन्छ। [Oxford Advanced Learner's Dictionary, Eight Edition, Oxford University Press, page 1644], [Trans-, Online Etymology Dictionary, https://www.etymonline.com/]

ईमेल: queeryouthgroup.nepal@gmail.com
सम्पर्क नं : +९७७-९८०८२६२६९९
ठेगाना : लपुमनपा-१६, ललितपुर, प्रदेश ३
http://fb.com/QYGnepal/
qygnepal
QueerYouthGroup







यसरी सञ्चार माध्यमहरूले गलत शब्द शब्दावलीको प्रयोग गर्दा यसले नेपाली भाषाको प्रयोगमा त्रुटीजन्य प्रचलनको स्थापना गरेको छ भने पारलैङ्गिक व्यक्ति र समुदाय प्रति भ्रम र मिथ्याविचारलाई समेत प्रोत्साहन गरेको छ। यस अर्थ 'तेस्रोलिङ्गी' शब्दको प्रयोग गर्न नहुने भन्ने होइन। तेस्रोलिङ्गी भनेर पहिचान गर्ने व्यक्तिहरूलाई तेस्रोलिङ्गी भनि सम्बोधन गर्न उचित छ। तर अङ्ग्रेजी शब्द 'Transgender' लाई 'तेस्रोलिङ्गी' भनि अनुवाद गर्ने र पारलैङ्गिक व्यक्तिहरूलाई समेत तात्विक रूपमा भाषागत अर्थ नै भिन्न रहेको 'तेस्रोलिङ्गी' भनि सम्बोधन गर्ने प्रचलन चाहिँ गलत छ।

यस्ता विषयहरूमा विवाद परेर सञ्चार माध्यम सम्बन्धी प्रेस काउन्सिलमा समेत उजुरी नपरेका होइनन् तर काउन्सिलले पारलैङ्गिक व्यक्तिहरू सम्बन्धी समाचार सम्प्रेषणमा कुनै निर्देशिका बनाउन नसक्दा सञ्चार माध्यमहरूले असंवेदनशील, भ्रमपूर्ण र अपमानजक भाषा प्रयोग गर्न छुट पाएका छन् र काउन्सिलले कानूनी उपचार पुर्याउन सकेको छैन। वैयक्तिक गोपनीयताका कारण प्रेस काउन्सिलमा परेका ती उजुरीहरूको विवरण संलग्न गर्न सकिएन। प्रेस काउन्सिलले अपाङ्गता भएका व्यक्तिहरू सम्बन्धी, बालबालिका सम्बन्धी लगायत सिमान्तकृत जनसमुदायहरू बारे संवेदनशील भएर समाचार सम्प्रेषण गर्न गराउन सम्बन्धी निर्देशिका बनाएझैँ पारलैङ्गिक व्यक्तिहरू सम्बन्धी प्रयोग गर्ने भाषामा संवेदनशीलता सुनिश्चित गर्न निर्देशिका बनाउन वाञ्छनीय देखिन्छ।

तसर्थ संविधानले प्रत्याभूत गराएको कानूनको दृष्टिमा सबै समान हुनुपर्ने तथा उचित र सम्मानजनक शब्दले सम्बोधन भई आत्मसम्मानपूर्वक बाँच्न पाउने अधिकार र भाषिक अधिकार समेतको संरक्षणका लागि प्रेस काउन्सिल र सञ्चार तथा सूचना प्रविधि मन्त्रालय लगायत अन्य कुनै निकाय सान्दर्भिक देखिएमा तिनीहरूलाई समेत भाषा आयोग ऐन २०७४ बमोजिम देहायका सिफारिस गरिपाउँ भनि यो निवेदन पेश गर्दछौँ :-

१) नेपाली भाषाको सञ्चारमाध्यमहरूले अङ्ग्रेजी शब्द 'Transgender' लाई नेपाली भाषामा 'तेस्रोलिङ्गी' भनि अनुवाद गरिरहेको अभ्यास भाषिक रूपमा त्रुटीपूर्ण रहेको, तात्विक अर्थ भिन्न रहेका दुई शब्द 'पारलैङ्गिक व्यक्ति' (Transgender person) र 'तेस्रोलिङ्गी व्यक्ति' (Third gender person) मा अन्योलता सृजना गराएको हुनाले त्यस्तो अभ्यास नगर्न नगराउन र नेपाली भाषामा पारलैङ्गिक व्यक्तिहरूलाई सोही शब्दले सम्बोधन गर्न गराउन सबै सञ्चारमाध्यमहरूमा निर्देशन जारी गर्नको लागि भनी सिफारिस गरिपाउँ।

२) पारलैङ्गिक व्यक्तिहरू सम्बन्धी सञ्चारमाध्यममा प्रयोग हुने भाषामा संवेदनशीलता, समानता, लाञ्छना तथा विभेद रहितताको सुनिश्चित गर्न सञ्चारमाध्यमहरूको लागि निर्देशिका बनाउन भनी सिफारिस गरिपाउँ।

यस बमोजिमको सिफारिसलाई यहाँको वार्षिक प्रतिवेदनमा पनि उल्लेख गर्न अनुरोध गर्दछौँ।

**संलग्न :** निवेदनमा व्याख्या गरिएको त्रुटीपूर्ण अभ्यासका केही उदाहरण / प्रमाणहरू। पाना ७




रुक्शना कपाली

कार्यकारी निर्देशक

ईमेल: queeryouthgroup.nepal@gmail.com

सम्पर्क नं : +९७७-९८०८२६२६९९

ठेगाना : लपुमनपा-१६, ललितपुर, प्रदेश ३

http://fb.com/QYGnepal/

qygnepal

QueerYouthGroup

## उदाहरण १ : महिला दिवसको उपलक्ष पारी बङ्गलादेशमा एक पारलैङ्गिक महिला समाचार वाचिकाका रूपमा नियुक्त भएको समाचार

### अङ्ग्रेजी भाषामा प्रकाशित समाचारहरू

'I was shaking inside': Banglade... ×
aljazeera.com/news/2021/3/9/i-was-shaking-inside-transgender-makes-tv-debut-in-bangladesh

ALJAZEERA News Coronavirus Features Economy Opinion Video More LIVE

News | LGBTQ

**'I was shaking inside': Bangladesh's first transgender TV anchor**

*Tashnuva Anan Shishir broke down in tears, but only after her word-perfect debut as a news anchor on International Women's Day.*

Sign up for Al Jazeera's
Weekly Newsletter
Subscribe to stay up-to-date on all the latest news
Enter your email
Sign Up

समाचारको लिङ्क : https://www.aljazeera.com/news/2021/3/9/i-was-shaking-inside-transgender-makes-tv-debut-in-bangladesh

Bangladesh's first transgender ne... ×
bbc.com/news/world-asia-56332730

**Bangladesh's first transgender news reader makes debut**

4 days ago

Top Stories

London police criticised after breaking up vigil

How a woman's death sparked UK soul searching

Ousted Myanmar civilian leader urges 'revolution'

10 hours ago

ADVERTISEMENT
BBC FUTURE
Future Planet

समाचारको लिङ्क : https://www.bbc.com/news/world-asia-56332730




समाचारको लिङ्क :
https://www.dhakatribune.com/bangladesh/2021/03/05/tashnuva-anan-becomes-bangladesh-s-first-transgender-news-anchor

प्रारम्भिक स्रोत रहेको अङ्ग्रेजी भाषाका सबै समाचारहरूमा उनलाई Transgender भनि सम्बोधन गरिएको छ । उनलाई 'She/Her' सर्वनामको प्रयोग गरिएको छ । उनले महिला भनेर पहिचान गर्ने अथवा पारलैङ्गिक महिला (जो महिला भनि पहिचान गर्छन् ) भन्ने उल्लेख छ ।

**नेपाली अनुवादहरू :**




**तश्नुभा बंगलादेशमा पहिलो तेस्रो लिङ्गी समाचार वाचिका**



समाचारको लिङ्क : https://kathmandupress.com/news/31453

बंगलादेशमा पहिलो तेस्रो लिङ्गी बनिन् ×

khabarhub.com/2021/09/250546/

होम समाचार अन्तर्राष्ट्रिय आर्थिक ट्राभल विचार स्वास्थ्य मनोरञ्जन सूचना-प्रविधि राजनीति सुरक्षा खेलकुद अन्य ENGLISH

# बंगलादेशमा पहिलो तेस्रो लिङ्गी बनिन् टेलिभिजन समाचार वाचक

खबरहब
२५ फाल्गुन २०७७, मंगलवार

पढ्न लाग्ने समय : < 1 मिनेट

41 Shares

अ अ अ



https://www.youtube.com/watch?v=905G3sHAAgE

समाचारको लिङ्क : https://www.khabarhub.com/2021/09/250546/

बंगलादेशमा एक तेस्रो लिङ्गीले पहिलोप ×

nepalkura.com/बंगलादेशमा-एक-तेस्रो-लिङ/

गृह पृष्ठ राजनीति समाज अर्थ देश / प्रदेश खेलकुद अन्तर्राष्ट्रिय अन्य रोचक / घोचक

# बंगलादेशमा एक तेस्रो लिङ्गीले पहिलोपटक समाचार वाचकको रुपमा टेलिभिजनमा प्रवेश पाइन्

प्रकाशित मिति: २७ फाल्गुन २०७७, बिहीबार, संवाददाता: Yukta



समाचारको लिङ्क :

https://nepalkura.com/%E0%A4%AC%E0%A4%82%E0%A4%97%E0%A4%B2%E0%A4%BE%E0 [illegible]
%E0%A4%B6%E0%A4%AE%E0%A4%BE-%E0%A4%8F%E0%A4%95-
%E0%A4%A4%E0%A5%87%E0%A4%B8%E0%A5%8D%E0%A4%B0%E0%A5%8B-
%E0%A4%B2%E0%A4%BF%E0%A4%99/

## उदाहरण २ : अमेरिकी सांसद सारा म्याकब्राइड

### अङ्ग्रेजी भाषामा प्रकाशित समाचारहरू

US election 2020: Sarah McBride | bbc.com/news/election-us-2020-54806677

# US election 2020: Sarah McBride to be first trans state senator

4 November 2020

US election 2020

Top Stories

London police criticised after breaking up vigil

How a woman's death sparked UK soul-searching

41 minutes ago

Ousted Myanmar civilian leader urges 'revolution'

10 hours ago



Waiting for api.permutive.com...

समाचारको लिङ्क : https://www.bbc.com/news/election-us-2020-54806677

Sarah McBride to become nation | edition.cnn.com/2020/11/04/politics/sarah-mcbride-delaware-state-senate/index.html

CNN politics The Biden Presidency Facts First US Elections

# Delaware Democrat Sarah McBride to become nation's first-ever transgender state senator

By Veronica Stracqualursi, CNN

Updated 1519 GMT (2319 HKT) November 4, 2020

समाचारको लिङ्क : https://edition.cnn.com/2020/11/04/politics/sarah-mcbride-delaware-state-senate/index.html

अमेरिकामा सांसदका रूपमा निर्वाचित भएका सारा म्याकब्राइड संयुक्त राज्य अमेरिकाका पहिलो पारलैङ्गिक व्यक्ति हुन् । अङ्ग्रेजी स्रोतहरूमा उनलाई Transgender, Trans woman भनि सम्बोधन गरिएको छ र She/Her सर्वनामको प्रयोग गरिएको छ ।

**नेपाली अनुवादहरू :**




समाचारको लिङ्क : https://ratopati.com/story/153423/2020/11/4/america-election




समाचारको लिङ्क : https://www.janakhabar.com/2020/11/04/67455/



**Onlinekhabar**
@Online_khabar

अमेरिकाको माथिल्लो संसदमा पहिलोपटक तेस्रोलिङ्गी (ट्रान्सजेन्डर) निर्वाचित भएको अन्तर्राष्ट्रिय सञ्चार माध्यमहरुले जनाएका छन् ।

Translate Tweet



**अमेरिकाको सिनेटमा पहिलोपटक ट्रान्स वुमन निर्वाचित**
Onlinekhabar.com - No. 1 News Portal from Nepal, Business news, Bank Credit Profit, Sale, Nepal Tourism Year news, Vehicle loan, sale, Bank
onlinekhabar.com

अनलाइन खबरले पनि सुरुमा तेस्रोलिङ्गी उल्लेख गरी समाचार प्रकाशन गरेका थिए । सामाजिक संजालमा विरोध भएपछी सच्याएर अङ्ग्रेजी शब्दको लिप्यान्तरण गरी 'ट्रान्स वुमन' उल्लेख गरे ।

समाचारको लिङ्क : https://www.onlinekhabar.com/2020/11/907203

सामाजिक सञ्चालमा विरोध भएको देखिने लिङ्क : https://twitter.com/Online khabar/status/13238363148112117 81

## उदाहरण ३ : मिस युनिभर्समा गएका एन्जिला पोन्स

### अङ्ग्रेजी भाषामा प्रकाशित समाचारहरू




समाचारको लिङ्क : https://www.washingtonpost.com/world/2018/12/17/miss-spain-becomes-first-transgender-woman-compete-miss-universe-pageant/

मिस युनिभर्समा पहिलो पारलैङ्गिक महिला सहभागी Angela Ponce हुन् । अङ्ग्रेजी स्रोतहरूमा उनलाई Transgender, Trans woman भनि सम्बोधन गरिएको छ र She/Her सर्वनामको प्रयोग गरिएको छ ।

### नेपाली अनुवादहरू :




समाचारको लिङ्क : https://www.dcnepal.com/2018/11/28503/